सून्या हुकुम् येति र काल बोल्या ।
आफ्नू सबै आशय ताहिं खोल्या ॥
हे नाथ् ! म हूँ काल् सबलाइ हर्न्या ।
मालुम् छ यो सब् किन बिन्ति गर्न्या ॥२१६॥

ब्रह्माजिको बिन्ति लियेर आयाँ ।
खुप् भाग्यले दर्शन आज पायाँ ॥
ब्रह्माजिको बिन्ति म आज गर्छू ।
होला हुकुम् जो उहि सीर धर्छू ॥२१७॥

सृष्टी देखि अगाडि पूर्ण रुपले आत्मा स्वरुप् एक् थियौ ।
नारायण् जलशायि रूप त पछी यै सृष्टि खातिर् लियौ ॥
स्वामित्का तहिं नाभिका कमलमा एक्लै म पैदा भयाँ ।
सृष्टी गर्न हुकुम् हुँदा हुकुमले लोक्सृष्टि गर्दै गयाँ ॥२१८॥

जस्ले दुःख दिया प्रजा कन तिनैलाई म मारूँ भनी ।
युग् युग्मा अवतार् समेत् लिनु भयो यस्तै अगाडी पनी ॥
ऐले यो अवतार् पनी पृथिवि कै भार् हर्न खातिर् धरी ।
भूको भार् पनि टारि बक्सनु भयो सब् दुष्ट संहार् गरी ॥२१९॥

एघारै म हजार वर्ष रहुँला जाँदा हुकुम् जो भयो ।
सोही वर्ष गणीतले गनि लिंदा एघार हज्जार् गयो ॥
बस्नैको अरु मन् छ पो त भगवन् ! इच्छा हजुर्को हवस् ।
याहाँ आउन मन् भया बखत भो लौ जल्दि पाल्नू हवस् ॥२२०॥

ब्रह्माको विनति सुनेर रघुनाथ् हाँसी तिनै कालका ।
साम्ने बात्चित गर्नु भो पनि बहुत् सब् जान कै चालका ॥
दुर्वासा यहि बीचमा तहिं गया राम्लाइ भेट्छू भनी ।
लक्ष्मण् द्वार महाँ थिया र ऋषिले तिन्लाइ भेटचा पनी ॥२२१॥

लक्ष्मण्लाइ तहाँ भन्या त ऋषिले हाजिर् गराऊ भनी ।
लक्ष्मण्लाइ कठिन् भयो कठिनले बिन्ती लगाया पनी ॥
भीत्रै जान हुँदैन जाउँ कसरी विस्तार् कहाँ तक् गरू ।
जुन् काम् खातिर आज आउनु भयो सो पूर्ण गर्छू बरू ॥२२२॥

लक्ष्मण्ले यति ती मुनी कन तसै बिन्ती गर्‍याथा जसै ।
दुर्वासा ऋषि हुन् बडा त पनि खुप् रीसाइ बोल्या तसै ॥
लै जाऊ अरू रामका चरणमा वाहीं शरण् पर्दछू ।
लै जान्नौ त मलाइ भित्र त कुलैको भस्म भन् गर्दछू ॥२२३॥

सुन्या येति वचन् र लक्ष्मणजिले मन्मा विचार् यो गर्‍या ।
कुल्को नाश् न हवस् कुशल् सब रहुन् क्या हुन्छ मै एक् मर्‍या ॥
ऐल्हे भीत्र त जान निश्चय पर्‍यो यसतो विचार् खुप् गरी ।
लक्ष्मण् भित्र गया जहाँ प्रभु थिया त्रैलोक्यका नाथ् हरी ॥२२४॥

द्वार्मा हाजिर छन् ऋषी भनि तहाँ बिन्ती गर्‍याथ्या जसै ।
ती काल्लाइ बिदा गरेर रघुनाथ् बाहीर आया तसै ॥
दुर्वासा सित भेट् भयो जब तहाँ राम्ले नमस्कार् गरी ।
सोध्नू भो ऋषिलाइ आउनु भयो कस्तो इरादा धरी ॥२२५॥

इच्छा भोजनमा थियो ति ऋषिको सो बिन्ति गर्दा भया ।
भोजन् बक्सनु भो र भोजन गरी ऋषी खुसी भै गया ॥
यै बीच्मा तहिं संभि बक्सनु भयो राम्ले प्रतिज्ञा पनी ।
लक्ष्मण्लाइ कसोरि मारुँ अहिले यै हो विपत्ती भनी ॥२२६॥

सन्ताप् श्रीरघुनाथका जब पर्‍यो लक्ष्मण् चरण्मा पर्‍या ।
मारी दीनु हवस् मलाइ भगवन् ! यो ताहिं बिन्ती गर्‍या ॥
ठूलो भन्नु छ धर्म हो उहि रहोस् बिन्ती गर्‍या यो जसै ।
यस्को निश्चय गर्नलाइ हुन गो ठूलो सभा एक् तसै ॥२२७॥

सब्ले बिन्ति गऱ्या बुझी हजुरमा त्याग् मात्र गर्नू हवस् ।
मारी हाल्नु त योग्य छैन अधिराज्! ज्यान् आज इन्को रहोस् ॥
ज्यान् हर्नू र वियोग गर्नु इ बराबर् हुन् भन्याथ्या जसै ।
लक्ष्मण्लाइ पनी बिदा दिनु भयो श्रीरामजीले तसै ॥२२८॥

लक्ष्मण्जी सरयू गया तस बखत् राम्का चरण्मा परी ।
प्राणायाम् तिरमा गरी कन गया जाहाँ रहन्थ्या हरी ॥
यस् रित्ले नरलोक छोडि कन ती लक्ष्मण् जसै ता गया ।
भेट्ना खातिर शेषका हजुरमा ब्रह्मादि जम्मा भया ॥२२९॥

लक्ष्मण्जी सितको वियोग् जब भयो दु:खी सरीका बनी ।
साह्रै दिक्क भयेर मन्त्रिहरु थ्यैं यस्तो हुकुम् भो पनी ॥
जान्छू लक्ष्मण छन् जता म त उता यो राज् भरत्ले गरुन् ।
राजा भै कन जो प्रजाहरु इ छन् इन्का सबै ताप् हरुन् ॥२३०॥

जस्सै येति हुकुम् सुन्या भरतले मूर्छित् सरीका भई ।
यस्तो बिन्ति गऱ्या तहाँ भरतले राम्का हजुर्मा गई ॥
बस्थ्याँ ख्वमितलाइ छोडि म कहाँ तिन् लोक बक्स्या पनी ।
छोरै छन् अधिराज् प्रभो! हजुरका राज्का इनै हुन् धनी ॥२३१॥

जेठा पुत्र हजूरका इ कुश विर् राज् कोशलामा गरुन् ।
उत्तर्मा बसि राज् गरी इ लवले सम्पूर्णका ताप् हरुन् ॥
दूई भाइ चलाउँछन् इ जति छन् सब् राज्यको काम् यहाँ ।
दुत् जाउन् मथुरा विषे किन उसै शत्रुघ्न बस्छन् तहाँ ॥२३२॥

सूनुन् लक्ष्मणको पनी ति समचार् पौंच्या परम्धाम् भनी ।
साथै जान हजूरका चरणमा दौडेर आउन् पनी ॥
यस्तो बिन्ति हजूरमा भरतले गर्दा प्रजाले पनी ।
पाया थाह र ताप् भयो मन महाँ जानन् कि छोडी भनी ॥२३३॥

बिन्ती एक वशिष्ठले तहिं गऱ्या लान्छन् कि छोड्छन् भनी ।
रुन्छन् सब् दुनियाँ यहाँ हजुरको पाउन् प्रसाद् ई पनी ॥
सुन्नू भो तहिं यो वशिष्ठ ऋषिले बिन्ती गऱ्याको जसै ।
ठाकुर्का पनि खुप् दया हुन गयो ती सब् प्रजामा तसै ॥२३४॥

इच्छा क्या छ बताउ पूर्ण गरुँला भन्न्या हुकुम् भो पनी ।
सब्ले बिन्ति गऱ्या प्रभू सित तहाँ सब् साथ जान्छौं भनी ॥
इच्छा पूर्ण हवस् भनी हुकुम भो सब् ती प्रजा खुस् भया ।
उत्तर् कोशलमा दुवै ति कुश लव् राज् गर्न खातिर् गया ॥२३५॥

केही दुत् मथुरा तरफ् प्रभुजिले जल्दी पठाई दिया ।
दुत् पौंच्या रघुनाथका हुकुमले शत्रुघ्न जाहाँ थिया ॥
दुत् देखी समचार् सुन्या प्रभुजिको शत्रुघ्नजीले जसै ।
छोरालाइ रजाइँ दी प्रभुजि थ्यैं ती जान आँट्या तसै ॥२३६॥

जेठा पुत्र सुबाहुलाइ मथुराजी राजधानी दिया ।
युप्लाई विदिशा दिया र ति गया जाहाँ रघुनाथ् थिया ॥
जल्दी गै कन पाउमा परि तहाँ यो बिन्ति लाया पनी ।
साथै जान भनेर आज रघुनाथ् आयौं हजुर्मा भनी ॥२३७॥

लौ मध्याह्न हुँदा तयार् भइ रह्या यस्तो हुकुम् भो तहाँ ।
आया राक्षस ऋक्ष वानरहरू सब् येति सुन्दा महाँ ॥
जान्छौं आज सँगै प्रभो ! हजुरमा यै बिन्ति सब्ले गऱ्या ।
सुग्रिव्जी पनि बिन्ति गर्न रघुनाथ्जीका अगाडी सऱ्या ॥२३८॥

अङ्गद्लाइ रजाइँ दीकन यहाँ जाँला म साथै भनी ।
आयाको छु दयानिधान् ! हजुरमा यो बिन्ति लाया पनी ॥
सुग्रिव्को अरुको ति ऋक्षहरुको बिन्ती सुनेथे जसै ।
प्यारा भक्त जहाँ विभीषण थिया ताहाँ गया राम् तसै ॥२३९॥

ताहीं गै कन यो हुकुम् पनि भयो बस्नू तिमीले यहीं ।
प्रारब्धै बलवान् छ जान सबका छुट्तैन सो ता कहीं ॥
जाहाँ सम्म रहन्छ भूमि तहिं तक् राज् गर्नु याहीं बसी ।
शिक्षा गर्नु सबै प्रजा कन बहुत् अन्यायिलाइ कसी ॥२४०॥

यस्को उत्तर छैन चुप् रहु भनी हूकुम् भयेथ्यो जसै ।
तेसै ठाउँ महाँ तुरुन्त हनुमान्जीलाइ देख्या तसै ॥
हूकुम् भो हनुमानलाइ हनुमन् ! चीरञ्जिवी भै रह्या ।
मेरो जुन् छ हुकुम् उ गर्न सब दिन् अत्यन्त तत्पर् भया ॥२४१॥

बुद्धीमान् तहिं जाम्बवान् पनि थिया जाँला म साथै भनी ।
तिन्लाई पनि यो हुकुम् हुन गयो बस्नू तिमीले पनी ॥
द्वाप्रमा कछु युद्ध गर्नु तिमि थ्यौं पर्न्या छ सोही गरी ।
स्वर्गैमा तिमि जाउला पछि भन्या ऐल्हे त यस्तै परी ॥२४२॥

यस्ता रित् सित जो अह्राउनु थियो सो सब् अह्राई वरी ।
सब् प्राणीहरु साथमा हिंड भनी हूकुम् भयो तेस् घरी ॥२४३॥

X X X X
X X X X

आफ्ना पुरोहित् ति वशिष्ठलाई ।
हूकुम् भयो मङ्गल गर्नलाई ॥
मङ्गल् अनेकै ऋषिले गराया ।
राम् स्वर्ग जाना कन निस्कि आया ॥२४४॥

सीताजिले रुप् अधिको छपाइन् ।
लक्ष्मी भई वाम् तिर बस्न आइन् ॥
दक्षिण् तरफ् भूमि बसिन् हरीका ।
सब् ताँहि आया भुवनै भरीका ॥२४५॥

शस्त्रास्त्र सब् ती पनि रूप धर्दै ।
हिंड्दा तहाँ मङ्गल शब्द गर्दै ॥
गायत्रि चार् वेद् सब ताहिं आया ।
रुप् धारि मङ्गल् यश शब्द गाया ॥२४६॥

जो ता अयोध्यापुरवासि थीया ।
तिन्ले सँगै सब् परिवार लीया ॥
बालो बुढो कोहि रहेन ताहाँ ।
सब्को गयो मन् उहि राम माहाँ ॥२४७॥

सुग्रिव्हरू वानर मुख्य आया ।
सब् पाप छूट्या भनि हर्ष पाया ॥
जो लोक् थियो राम् सित जान गै गो ।
गुल्जार् अयोध्या पनि शून्य भै गो ॥२४८॥

छोड्या शहर् क्यै गइ भूमि माहाँ ।
देख्या प्रभूले सरयू र ताहाँ ॥
आफ्ना विराट् रुप् कन संझि लीया ।
आफैं त सब्का पनि नाथ थीया ॥२४९॥

ब्रह्मा ऋषी देव र सिद्ध आया ।
आकाश् विमान्ले भरि छुट्टि छाया ॥
श्रीराम् उपर् खुप् सित पुष्पवृष्टि ।
सब् गर्न लाग्या उहिं लाइ दृष्टि ॥२५०॥

गाऊँछन् कहिं नाच्तछन् प्रभुजि कै यश् मात्र कीर्तन् गरी ।
यै बिच्मा रघुनाथ् पस्या सरयुमा सब्का अगाडी सरी ॥
ब्रह्माको पनि ताहिं औसर पर्‍यो हात् जोरि बिन्ती गर्‍या ।
सब्को ताप् अब गै गयो सकल लोक् आनन्दसागर् पर्‍या ॥२५१॥

ख्वामित्‌ले अब विष्णुको रुप लिने वेला भयेथ्यो भनी ।
पाऱ्या बिन्ति र होइ बक्सनु भयो श्रीराम् चतुर्भुज् पनी ॥
जो शत्रुघ्न भरत् थिया दुइ जना ती शङ्ख चक्रै बनी ।
ख्वामित्‌का तहिं बाहुमा बसि गया बस्न्या यहीं हो भनी ॥२५२॥

ब्रह्माण्डै सब देवगण् खुसि भया यो रूप देख्या जसै ।
ब्रह्मालाइ हुकुम् गऱ्या प्रभुजिले सब् प्राणि खातिर् तसै ॥
हे ब्रह्मन् ! जति जन् थिया सहरमा सब् साथ जान्छौं भनी ।
आया सब् परिवार् लियेर सँगमा लाग्या पछाडी पनी ॥२५३॥

इन्‌लाई शुभलोक देउ तिमिले सत्‌लोकमा वास् गरुन् ।
आफ्ना सब् परिवारले सँग रही आनन्दमा ई परुन् ॥
ब्रह्माले प्रभुको हुकुम् यति सुनी हूकुम् सिरोपर् लिया ।
सब्‌लाई सुख भोग गर्न कन एक् लोकै खटाई दिया ॥२५४॥

ती लोक्‌ले पनि खुस् भयेर सरयूमा स्नान् सबैले गऱ्या ।
जुन् सान्तानिक लोक हो उहिं पुगी आनन्दका भै गया ॥
सुग्रिव् सूर्य्य विषे गई मिलि गया अंशै हुनाले गरी ।
भूभार् यै रितले हरेर रघुनाथ् वैकुण्ठ पौंच्या हरी ॥२५५॥

येती मात्र कह्या सदाशिवजिले ती पार्वती थ्यैं पनी ।
जस्‌ले यस् कन पाठ गर्छ मनले अत्यन्त ठूलो भनी ॥
तिन्‌का जन्म सहस्रका जति त छन् पाप् भस्म हुन्छन् भनी ।
सब् षड् शास्त्र बताउँछन् पढि लिया तर्छन् दुनीयाँ पनी ॥२५६॥

शम्भूले पार्वती थ्यैं खुसि भइ बहुतै प्रेमपूर्वक् कह्याको ।
संसार् पार् तर्नलाइ सब कन सजिलो साँघु झैं भै रह्याको ॥
जानी यस्‌लाइ जो ता जनहरु बहुतै प्रेमले पाठ गर्छन् ।
संसार्‌का सौख्य सब् भोग् गरि कन दुनियाँ सब् सहज् पार तर्छन् ॥२५७॥

● ● ●

# १. भक्तमाला

प्रतिज्ञा मैले यो यमसित गर्‍याँ जन्मि अब ता ।
सिताराम् भज्न्या छू विषयहरूमा छाडि ममता ॥
प्रतिज्ञा सो बिर्सीकन जन धनै खोजि डुलियो ।
सिताराम् भज्न्या हो शिव शिव उसै आज भुलियो ॥१॥
सिताराम् भज्न्या छू भनिकन प्रतिज्ञा अघि गरी ।
गयाको होस् आइस् कति दिन भजिस् भन् अघि सरी ॥
यसो भन्नन् स्वामित् मकन यमराज् तेस् बखतमा ॥
कसो भन्नू मैले भुलिकन रह्याँ एस् बखतमा ॥२॥
गयो बालक्काल्को वय पनि उसै बालरसले ।
यसै रित्ले यौवन् पनि बितिगयो मोहवशले ॥
भयो वृद्धावस्था अझ पनि भजीदैन मनले ।
कसो गर्नन् स्वामित् मकन यमका दूतहरूले ॥३॥
घडी दिन् पक्षै मास् ऋतु अयन यै काल गतिले ।
घट्यो आयू मेरो विषय अझ खोज्दै छ मतिले ॥
कृपानाथ् हे स्वामी अब कसरि संसार तरुँला ।
कृपा राख्या जावस् नतर त अनाथ् बीच परुँला ॥४॥
बडो दुर्लभ् जानोस् भरत भुमिको जन्म जनले ।
सहज् मिल्छन् ठाकुर् हरि भजि लिया शुद्ध मनले ॥
बखत् यस्तो जानी हरिचरणमा मन् पनि धरोस् ।
निरन्तर् श्रद्धाले हरि खुशि हुन्या दान् पनि गरोस् ॥५॥
जगत्मा पृथ्वीका अधिपति बडा दौलथि थिया ।
मरण्का वेलामा बुझिलिनु ति क्या लीकन गया ॥
निरन्तर यै सम्झी हरि भजि रहोस् शुद्ध मनले ।
परन्तू हक् मर्न्यै छ त बटुलि क्या गर्नु धनले ॥६॥

कडोरन्का मालिक् अघि पनि बडा वीर्हरु भया ।
तिमध्ये जो जो हुन् हरि भजिलिन्या पार् पनि गया ॥
मरण्का वेलामा हरिबिनु त क्या भर् छ अरुको ।
शरण् लेला सो नाथ् अधिपति अजामीलहरुको ॥७॥
जगत्मा सब् ढुंड्दै सवकन विचान्या जन पनि ।
बडा हूँ भन्न्याका घरघर रहयाको धन धनै ॥
रहचा छन् कालैका वश परिरहयाका जन पनि ।
बुझ्याँ मैले सब्को रिपुसरि भयाको पनि मनै ॥८॥
मनुष्यै योनीमा यदि हरि भज्यो ता जन तऱ्यो ।
अवश्यै फन्दामा हरिकन न भज्न्या पछि पऱ्यो ॥
जगत्मा यो चाला बुझिकन विचार् गर्नु जनले ।
निरन्तर् ठाकुर्को चरणकमलै धर्नु मनले ॥९॥
भजौंला भन्दैमा कति कति बित्यो जन्म जनको ।
मरौंला भन्नाको अझ पनि विचार् छैन मनको ॥
अहो दैवी माया वडि बलवती जानि मनले ।
विचार् गर्दै गर्दै हरि भजिलिनू भक्त जनले ॥१०॥
दया पाऊँ स्वामित् विनति छ हजुर्का चरणमा ।
नलागुन् पाशा फेर् मकन यमराज्का मरणमा ॥
दयाले पो छुट्छन् सकल जनका दुःखहरु ता ।
उपायै क्यै छैनन् कहिं पनि दया देखि अरु ता ॥११॥
भरोसा स्वामित्को गरिकन रहन्छू दिनदिनै ।
सहन्छू सब् आपत् जति जति त पर्छन् छिनछिनै ॥
पऱ्याका पर्न्यै छन् मकन करुणा दूर् हुन गया ।
सहज्मा टर्न्यै छन् मकन करुणा पो यदि भया ॥१२॥
मुरारे स्वामित्का चरणतलमा मन् न धरि ता ।
बडो दुर्लभ् देख्याँ सकल जनको मुक्ति गति ता ॥
विचार् गर्छू क्यारूँ मन पनि बलैले हरि लिया ।
दशेन्द्री डाँकूले बिच बिच पसी दुःख् पनि दिया ॥१३॥

न कैल्हे भक्तीले गुरुचरणको ध्यान गरियो ।
न ठाकुर्‌को पूजा गरि तुलसिको पत्र धरियो ॥
दया भो स्वामित्‌को भनिकन भन्या पार तरियो ।
अवश्यै साँचो हो नतर यमका पास परियो ॥१४॥
पुकारा गर्दो छू घडि घडि रुँदो छू चरणमा ।
दया छे स्वामित्‌की म त हर घडी छू चरणमा ॥
विचार् गर्थ्यो क्यारोस् भनिकन दया हुन्छ त पनि ।
झलक् पाइ भुल्न्या होस् भनिकन रिसै हुन्छ त पनि ॥१५॥
जगत् कोइ जान्दैनन् भनु त सबका बात् पनि भन्या ।
पलक् भर् ती योगी अघि सरि बडो ज्ञान कहन्या ॥
उनै काम् गर्छन् ता यमपुरि महाँ चोट मिलन्या ।
अहो यो क्या ले हो बुझिबुझि सबै लोक भुलन्या ॥१६॥
भजन् राम्‌को ठूलो बुझिकन भजन् गर्नु जनले ।
नभुल्नू कैल्हे यस् विषय सुखमा लागि धनले ॥
अविश्वासी चोला कति रहन जाला बितिगया ।
पछीतो खुप् होला जपतप विवेक् केहि नभया ॥१७॥
टहल् ठाकुर्जीको अलिकति यहाँ केहि नगरी ।
गभीर् संसार् सागर् सहजसित पार् पुग्नु कसरी ॥
टहल् ठाकुर्जीको गरि लिन सक्यादेखि तरियो ।
विपत्‌का खानीमा नतर सहजै फेरि परियो ॥१८॥
अनाथ्‌को नाथ मै हूँ भनिकन हँसीलो मुख गरी ।
हरूँ यस्‌का पाप् ताप् भनिकन अगाडी पनि सरी ॥
कृपादृष्टी नाथ्‌ले यदि दिनु भया तर्छु अहिले ।
कृपादृष्टी वाहेक् तप गरि त पार् तर्छु कहिले ॥१९॥
अवीवेकी मूढो त्रिभुवनविषे को छ म सरी ।
बिताञाँ व्यर्थै यस् विषयरसमा जन्म यसरी ॥
कउन् ठूलो चिज् हो विषयरस यस् पाजि रसमा ।
दिञाँ मैले यो मन् बुझिबुझि पर्‍याँ मोहवशमा ॥२०॥

जगत्मा खुप् धाउँ न त सुफल पाउँ कहिं रती ।
तपस्याको हानी हुनकन गयाको कहुँ कती ॥
तपस्या गर्न्या काल् अघि बिति गयो क्यारुँ अहिले ।
यसै योनीमा पार् सहज न तऱ्या तर्नु कहिले ॥२१॥
कटीको पीताम्बर् करकमलका कंकणहरू ।
किरीट् कुण्डल् कौस्तुभ् तुलसि वनमालाहरु अरू ॥
बलैले सम्झन्छू दृढ नरहन्या एक् क्षण पलक् ।
कउन् दिन्मा देख्छू प्रभु हजुरको सुन्दर झलक् ॥२२॥

# २. प्रश्नोत्तरमाला

अपार-संसार-समुद्रमाहाँ
डूब्याँ शरण् कुन् छ मलाइ याहाँ ?
चाँडो कृपाले अहिले बताऊ
श्रीरामको पाउ छ मुख्य नाऊ ॥१॥
कुन् हो सदा बन्धनमा पऱ्याको ?
जस्ले छ यो मन् सुखमा धऱ्याको ।
मुक्ती भन्याको त पदार्थ कुन् हो ?
वैराग्य भन्नू चिज जान्नु जुन् हो ॥२॥
ठूलो नरक् कुन् छ भनेर जान्नू ?
यही शरीरै छ भनेर मान्नू ।
कस्तो स्वभाव् स्वर्ग भनेर जान्नू ?
तृष्णा छुट्या स्वर्ग भनेर मान्नू ॥३॥
कुन् ज्ञान् छ ठूलो भनि लीनु पर्न्या ?
वेदान्तको ज्ञान छ दुःख हर्न्या ।
कुन् हो सहज् मोक्ष गरायिदीन्या ?
ज्ञान् हो अरूको किन नाम लीन्या ॥४॥
कुन् मूल ढोका छ नरक्कि ? नारी,
लान्छे नरक् मोह ठुलो फिजारी ।
कुन् धर्म हो स्वर्ग पुऱ्यायिदीन्या ?
तेस्तो अहिंसा छ बुझेर लीन्या ॥५॥
सुत्न्या सुखै पूर्वक आद्मि कुन् हो ?
समाधि लायी रहन्या त जुन् हो ।
जागा कउन् हो कसरी उ जान्न्या ?
जो सत् असत्को छ विवेक गर्न्या ॥६॥

कस्लाइ हो शत्रु भनेर जान्नू ?
आफ्ना दशै इन्द्रिय शत्रु मान्नू ।
कस्लाइ खूब् मित्र भनेर मान्नू ?
जीत्या तिनै इन्द्रिय मित्र जान्नू ॥७॥

दरिद्र नाउँ नरमा छ कस्को ?
विशाल तृष्णा घरमा छ जस्को ।
कुन् हो धनी सब् नरले कहयाको ?
सन्तोषले जो छ खुसी रहयाको ॥८॥

जिउँदै मर्‍याको भनि नाम् छ कस्को ?
उद्यम् विना वित्तछ काल जस्को ।
अमृत्-सरी कुन् छ भन्या ? निराशा
पाशा कउन् हुन् ? ममतै छ पाशा ॥९॥

को छन् सुरा झैं अतिमोह गर्न्या ?
स्त्री जान्नु तस्तै गरि चित्त हर्न्या ।
कस्लाइ विद्वान्हरु तुच्छ भन्छन् ?
जो कामदेव्को वशमा रहन्छन् ॥१०॥

मृत्यू भन्याको भन आज कुन् हो ?
अप्यश् भन्याको तिमि जान जुन् हो ।
कुन् हो सबैले गुरु भन्नु पर्न्या ?
जो हो हितैको उपदेश गर्न्या ॥११॥

कुन् शिष्य हो शिष्य भनेर जान्नू ?
जुन् गर्छ सेवा उहि शिष्य मान्नू ।
कुन् दीर्घ रोग् हो सबलाइ हर्न्या ?
संसार हो जन्मनु मर्नु पर्न्या ॥१२॥

यो दीर्घरोग् फेक्न उपाय कुन् हो ?
अनित्य सब् जान्नु विचार जुन् हो ।
भूषण् छ कुन् सज्जनले कहयाको ?
शीलै छ भूषण् बहुतै बन्याको ॥१३॥

कस्लाइ खुब् तीर्थ भनेर मान्नू ?
जुन् शुद्ध मन् हो उहि तीर्थ जान्नू ।
विद्वान् कउन् चिज्कन तुच्छ मान्छन् ?
कान्ता र सुन् त्याज्य भनेर ठान्छन् ॥१४॥

कुन् सुन्न बेस् हुन्छ भनेर मान्नू ?
वेदान्तका बात् गुरुदेखि सुन्नू ।
कुन् ब्रह्म जान्नाकन हेतु मान्नू ?
सत्सङ्ग वेदान्त विचार जान्नू ॥१५॥

कुन् सन्त हुन् ? लोक्कन तुच्छ मान्न्या ,
सब् छोडि साँचो शिवतत्त्व जान्न्या ।
ज्वर् कुन् छ ? चिन्ता ज्वर-तुल्य मान्न्या,
कुन् मूर्ख हो ? कत्ति विवेक् नगर्न्या ॥१६॥

कुन् काम हो मन् दिइ गर्नु पर्न्या ?
श्री विष्णुको भक्ति छ दुःख हर्न्या ।
कुन् आद्मि हो यस् नरमा जियाको ?
निर्दोषि भै मन् हरिमा दियाको ॥१७॥

विद्या र बोध् कुन् चिजलाइ भन्छन् ?
जुन् पाउँदा मुख्य भयी रहन्छन् ।
कुन् मुख्य लाभ् हो ? भन आज तेही ।
आत्मासरीको अरु छैन केही ॥१८॥

सारा जगत् जित्छ अवश्य कस्ले ?
अभ्यास् गरी मन्कन जित्छ जस्ले ।
कस्ता बली वीर्कन वीर् कहन्छन् ?
कन्दर्प जस्का वशमा रहन्छन् ॥१९॥

कुन् हुन् बडा धीर् सब धर्म जान्न्या ?
स्त्रीका कटाक्षैकन तुच्छ मान्न्या ।
कुन् हुन् ठुला विष् ? विषयै कहिन्छन्
ती कालकूटादि बरू सहिन्छन् ॥२०॥

कुन् दुःखि हो यस् विषलाई लीन्या ?
संसारमा खुप्सित चित्त दीन्या ।
कुन् धन्य हो ? जुन् छ परोपकारी,
कुन् पूज्य हो ? तत्त्व लिन्या विचारी ॥२१॥

कौनै बखत्मा पनि क्या नगर्नू ?
पाप्मा अगाडी कहिल्यै नसर्नू ।
विद्वान् पुरुष्ले कति काम गर्नू ?
स्वधर्म थामीकन शास्त्र पढ्नू ॥२२॥

साइला कउन् हुन् सबलाइ बाँध्न्या ?
स्त्री हुन् सदा पाउ समाइ–राख्न्या ।
सब् व्रत्हरूमा व्रत मुख्य कुन् हो ?
सब्देखि सानो म छु भन्नु जुन् हो ॥२३॥

क्या जानिईदैन भनेर बक्नू ?
स्त्रीको चरित्रै छ नजानिसक्नू ।
क्या हो सबैले त नछोडि सक्न्या ?
यै हो दुराशा अरु कीन बक्न्या ॥२४॥

कुन् हो पशूतुल्य भनी कह्याको ?
विद्या नभै मूर्ख पडी रह्याको ।
सज्ज्न्हरू कस्सित सङ् नगर्नू ?
खल् – पापि-निच्का नगिचै नपर्नू ॥२५॥

कस्ता पुरुष् मुक्त भएर तर्छन् ?
सत्सङ्ग – भक्तीहरु जो त गर्छन् ।
छोटो कउन् हो ? नलजाइ माग्न्या,
कुन् हो बडो ? जो धनमा नलाग्न्या ॥२६॥

जन्म्यो कउन् ? जन्मनु फेर् नपर्न्या
मर्न्या कउन् हो ? मरि फेर् नमर्न्या ।
कस्लाइ लाटो छ भनेर भन्छन् ?
जो ता बखत्मा पनि चुप् रहन्छन् ॥२७॥

बैह्रो कउन् हो ? हित बात् नसुन्न्या
कुन् हो अविद्या मित नारि मान्न्या ।
कुन् तत्त्व साँचो छ भनेर खोज्नू ?
साँचा शिवै छन् शिवलाइ रोज्नू ॥२८॥

उत्तम् भन्याको भन आज कुन् हो ?
सज्जन्हरूको सुचरित्र जुन् हो ।
कुन् कर्मले शोक्हरु दूर हुन्छन् ?
श्री विष्णुका पूजनले ति टर्छन् ॥२९॥

कुन् शत्रु हुन् खुब् बलवान् भयाका ?
कामादि हुन् सब् नरले कह्याका ।
कुन् हो कसै पूर्ण गरी नसक्नू ?
कामै छ त्यस्तो अरु कीन बक्नू ॥३०॥

कुन् दुःखको मूल भनेर जान्नू ?
मेरो म हुम् भन्नु छ तेहि मान्नू ।
कुन् हो जगत्को गहना बन्याको ?
विद्यै छ सब्को गहना बन्याको ॥३१॥

कुन् सत्य हो सत्य कसोरि जान्नू ?
जुन् प्राणिको हित् छ उ सत्य मान्नू ।
कुन् छाडिदीन्या सुखि हुन्छ भन्छन् ?
स्त्री छाड्न सक्न्या सुखिमा गनिन्छन् ॥३२॥

ठूलो छ दान् कुन् गरि ताप हर्न्या ?
सब् प्राणिको निर्भय जो त गर्न्या ।
कुन् हो बुझ्यौ निश्चय नाश हून्या ?
त्यो भक्तको मन् छ भनेर जान्या ॥३३॥

कस्तो भयामा भय छुट्टि हुन्छन् ?
मुक्तै भयामात्र ति पाप टर्छन् ।
वाण्तुल्य कुन् हो अति दुःख दीन्या ?
जुन् मूर्खता हो उहि जानि लीन्या ॥३४॥

कस्का सधैं दास् भइ पाउ पर्नू ?
बूढा गुरूमा लगि चित्त धर्नू ।
प्राणान्तका समयमा कति कर्म गर्नू ?
सम्पूर्ण छोडि रघुनाथ्–तिर चित्त धर्नू ॥३५॥
कुन् चोर हो इ जनको भनि चोर जान्नू ?
जुन् वासना त छ असत् उहि चोर मान्नू ।
शोभायमान भयि बस्छ सभाविषे को ?
सब्को प्रसन्न मन गर्दछ शास्त्रले जो ॥३६॥
मातासरी सुख दिन्या कुन चीज् छ जान्नू ?
विद्यै छ त्यस्तो अरु कौन खोज्नू ।
कुन् हो जती–जति दियो उति बढ्न जान्या ?
विद्यै रहेछ बुझि निश्चय तेहि मान्या ॥३७॥
कुन् काम हो अति डरायर दूर सार्नू ?
लोकापवाद् छ घटिया कहिल्यै न धर्नू ।
कुन् कर्म गर्दछ भन्या उहि बन्धु मान्नू ?
आफ्नो सहाय यदि गर्दछ बन्धु जान्नू ॥३८॥
कस्ता मनुष्यकन पित्रि भनेर जान्नू ?
जस्ले त पालन गर्‍यो उहि पित्रि मान्नू ।
कुन् चीज जानिकन चीज् रहँदैन जान्नू ?
यो चीज् त नित्य परमेश्वरलाइ मान्नू ॥३९॥
कुन् चीह्निया सकल चीज्हरु चीह्निइन्छन् ?
ईश्वर् चिह्नया सकल वाँहि चिह्नी सकिन्छन् ।
कुन् चीज् रहेछ अति दुर्लभ खोजि जान्नू ?
सत्सङ्ग हो अधिक दुर्लभ तेहि मान्नू ॥४०॥
कुन् त्याग् कहिन्छ ? शिवको सब तत्त्व जान्नू,
कुन् जीत्न सक्नु छ कठिन् ? उ त काम मान्नू ।
कुन् हो पशूसरि भनी नरले कहयाको ?
आत्मा नजानिकन मूर्ख पडी-रहयाको ॥४१॥

अम्मृत्सरी अघि भई पछि वीष बन्न्या,
कुन् हो ? स्त्रि हुन् किन अरू धिजलाइ भन्न्या ।
कुन् शत्रु हुन् अघि त मित्त्र सरी रह्याका ?
पुत्रादि हुन् सकल सज्जनले कह्याका ॥४२॥
कुन् चीज् छ चञ्चल यहाँ क्षण एक् घरीको ?
आयुष्य यौवन बुझ्या बिजुली सरीको ।
कुन् दान् ठहर्छ अति मुख्य यहाँ गर्‍याको ?
जुन् दान् छ पात्रहरुका मुखमा पर्‍याको ॥४३॥
प्राण् जान खोज्दछ भन्या पनि कुन् नगर्नू ?
संसार् अनित्त्य बुझि पाप् कहिल्यै नगर्नू ।
कुन् हो अघी सरिसरीकन गर्नु पर्न्या ?
पूजा सदाशिवजिको सब पाप हर्न्या ॥४४॥
कुन् कर्म मुख्य भनि सद्गुरुले कहन्छन् ?
जुन् कर्मले त परमेश्वर खुश् रहन्छन् ।
कुन् स्थानमा बसुँ भनीकन दील् नदीनू ?
संसारमा भनि अवश्य चिह्नेर लीनू ॥४५॥
रात्दिन् निरन्तर कतातिर चित्त धर्नु ?
संसार् अनित्त्य बुझि तत्त्व-विचार गर्नू ।
तत्त्वै-विचार् छ सबको सब पाप हर्न्या,
ज्ञान् जान्नलाइ सबले यहि चित्त धर्न्या ॥४६॥
प्रश्नोत्तरै छ बढिया गुरुले भन्याको,
सत्कर्म जान्नकन अर्तिसरी बन्याको ।
यस्को निरन्तर विचार् जतिले त गर्छन्,
संसार्-समुद्र सहजै त तिनै त तर्छन् ॥४७॥
प्रश्नोत्तरै हो मणिरत्नमाला,
यस्लाइ पैह्रेर जहाँ त जाला ।
तेस्का यसैले सब पाप टार्ला,
फेर् अन्त्यमा मुक्त गराइ छाड्ला ॥४८॥

॥इति॥

# ३. वधूशिक्षा

## प्रस्तावना

एक थोक् भन्छु नमान्नू दुःख मनमा हे मित्र तारापति ।
तिम्रा ई जति छन् जहानहरु ता जुभ्रन्या रहयाछन् अति ॥
सून्याँ दन्तबभान आज घरको कर्कर् गर्‍याको जसै ।
भर्रात् जाग्रन भ्कैं भयो मकन ता लागेन आँखा कसै ॥१॥
धन् इज्जत् घरबार देख्छु बढिया छैनन् कुनै चिज् कमी ।
बूहारी यदि कर्कशा हुन गया क्या घर् गरौला तिमी ॥
साह्रै भ्कोंक उठयो मलाइ र वधूशिक्षा बनायाँ पनी ।
यस्ले पत्नि, बुहारि, छोरिहरुको तालिम् गरौला भनी ॥२॥

हुन त म अतिथी हूँ यस् बिनूँ क्या छ खाँचो ।
तर पनि म त भन्छू मित्र हौ जानि साँचो ॥
घर चतुरत्रि गर्छन् बुद्धिमान्ले अगाडी ।
बखत चुकि दिँदामा हुन्छ काहाँ पछाडी ॥३॥

## उपदेश

प्रातःकाल महाँ उठेर पहिले ध्यान् ईश्वरैको गरून् ।
सो ईश्वर् पति हुन् भनेर पछि त्यो भक्ती पतीमा धरून् ॥
भक्तीले पति ईश्वरै भनि बुभ्कून् पाऊ-तलैमा परून् ।
पूजा हो पतिको भनेर घरका काम्मा अगाडी सरून् ॥१॥
भ्कट्पट् स्नान गरेर शुद्ध जलले सब् देह निर्मल् गरी ।
जस्तो पुग्दछ सोहि माफिक असल् धोती कटीमा धरी ॥
सासूका चरणाविन्द युगमा पूजेर पाऊ परून् ।
मैले काम् गरुँ क्या अह्राउनु हवस् यो ताहिं बिन्ती गरून् ॥२॥
मान्ने छन् घरका सबै जति जना तिन्लाइ ढोग् भेट् गरी ।
चाकर्लाइ अह्राउनू खुशि हुँदै मीठा वचन्ले गरी ॥
माटो पानि खराउ ओटन रुमाल् धोती दतीउन् धरी ।
स्नान् गर्न्या अखडा जहाँ छ तहिं गै राखून् तयारी गरी ॥३॥

पूजाको सरजाम् गरून् पति पूजा गर्छन् प्रभूको भनी ।
पूजामा खतडा कदापि नपरोस् कौनै कुराले पनी ॥
कस्तै अल्मलमा रहोस् घरमहाँ आया जगाया अलक् ।
जोगी जङ्गमले भन्या मुठि दिनू ढीलो नगर्नू पलक् ॥४॥
घर् सब् झारि बढारि नित्य त्यसले लिप्तै र पोत्तै रहोस् ।
चाकर् सब् थलिया गया कहिं भन्या आफैं तयारी रहोस् ॥
स्वामीका चरणाविन्द युगको जल् भक्तिले पान् गरून् ।
निर्मल् देह गराउनाकन उ जल् केही शरीर्मा छरून् ॥५॥
जो इच्छा पतिको छ सो वुझि उसै माफिक् सबै काम् गरून् ।
जुन् स्थान् हो चिजको उहीं लगि उ चिज् राख्न्या स्वभाव् पो धरून् ॥
स्त्रीको खालि निधार् कदापि नरहोस् खाली निधार् भै जती ।
गर्छन् कर्म फलै हुँदैन तिनका टीको लगाया जती ॥६॥
तस्मात् नित्य टिका लगाइ पहिले धन्धा पछाडी गरून् ।
पूजाको सरजाम् तयार् गरि सकी भान्छा विषे मन् धरून् ॥
भान्छाको सरजाम चाकर गरून् भाँडा सफाई गरी ।
खान्या चीज भँडारमा पसि झिकुन् आफै अगाडी सरी ॥७॥
रोगी बालक वृद्ध कोहि घरमा हुन्छन् त तिन्को पनी ।
घत् जानीकन तम्तयार् चिज गरून् खान्या छ यस्तो भनी ॥
यस्ता रीत् सित चीज् बनाइ बढिया सासू-ससूरा-पति ।
लाई ख्वाइ सकेर फेरि घरका ख्वाउन् जहान् छन् जति ॥८॥
ख्वाई प्याइ सकेर सर्व परिवार्ले खाइ सक्छन् जसै ।
चूह्ला चौकि लिपाइ जल्दि ति जुठा भाँडा मझाउन् तसै ॥
जो चीज् वस्तु भँडार देखि अघि जो झीकेर ल्याई थिइन् ।
सो संझेर तुरुन्त सोहि थलमा ती वस्तु राखी दिउन् ॥९॥
अल्सी दूर गरेर नारिहरुले थान्को र मान्को गरी ।
काम्धाम्मा परिवार लायर विचार् गर्दै रहुन् दिन् भरी ॥
धागा बत्ति समेत काति टपरी दूना बोहोता पनी ।
सिन्का साफ चिरेर राखनु अनी चाहिन्छ काम्मा भनी ॥१०॥

पूजा व्रतादिहरुका जति तीथि पर्छन् ।
संझेर गर्नु नभुलीकन पाप हर्छन् ॥
ठूलो व्रतै त पनि सेवन गर्नलाई ।
क्यै छैन फेरि अरु निश्चय नारिलाई ॥११॥

रोगी बालक वृद्ध सासु ससुरा जेठाज्यु देवर् पति ।
फूपू सासु अमाज्यु नन्द जति छन् खान्छन् इ खाजा जति ॥
सब्को हित् घत जानि नित्य दिनमा खाजा बनाई दिउन् ।
यस् रीत्ले अति खुश् बनाइ परिवार् सब्लाइ हात्मा लिउन् ॥१२॥
सौताको रिस गर्नु पाप छ बहुत् एकै दुवैका पति ।
मर्दामा पनि जानुपर्छ जसले मीलेर सन्नै सती ॥
यस्तो जानि नमानि केहि मनमा मीलून् बहूतै गरी
टाल्टुल् गर्नु फुटघो टुटघो घर भन्या सिप्लाइ जाहेर् गरी ॥१३॥
अर्काका घरमा नजानु कहिल्यै आफ्ना घरैमा बसी ।
जे हूनू सब चीज् जती छ घरमा कूना र कानी पसी ॥
पर्छन् श्राद्ध दशैं तिहार अरु चाड् चाहिन्छ तिन्मा जती ।
ती चिज् सम्झि अगाडि संग्रह गरोस् यस्मा नचूकोस् रती ॥१४॥
मान्न्या जन् कन मान्नु जान्नु घरको ठग्को ठगाञी पनी ।
सब् सासूसित भन्न जानु उ गरून् यस्को सजाञी भनी ॥
यस्ता रीत् सित सब् गरेर वशमा राखोस् सबैमा दया ।
तिन्को याद तुरुन्त गर्नु जन जो भोका र नाङ्गा भया ॥१५॥
पाहूना जति आउँछन् घरमहाँ दर्जा छ तिन्को जति ।
सो जानेर उसै बमोजिम गरोस् मर्ज्याद् न चूकोस् रति ॥
पाउन् पापि कठोर चोरहरुले सोही बमोजिम् जवाफ् ।
राखोस् इष्ट कुटुम्ब मित्रहरुमा अमृत् सरीको रवाफ् ॥१६॥
साँचो बोल्नु नबोल्नु बात कहिल्यै झूटो भन्याको रति ।
आखिर् मर्नु छ पाउनू छ उति फल् याहाँ गऱ्याको जति ॥
यस्तो ज्ञान् मनमा लिईकन रहुन् सासू ससूरा पति ।
जे भन्छन् उहि गर्नु छैन अरु ता संसार तर्न्या गति ॥१७॥

भन्छन् शास्त्र पती र सासु ससुरा जेठाज्यु मान्नू भनी ।
भन्छन् ता पनि जो पती छ उसरी हूँदैन कोही पनी ॥
दृष्टान्तै पनि मिल्छ सासु ससुरा जेठाज्यु बित्ता सती ।
को जान्छन् पति पो बित्या पनि भन्या जानू छ संगै सती ॥१८॥
हाँस्नू छैन कदापि नारिहरुले वेश्या हुन्या हाँस्तछन् ।
वेश्या लौ नहउन् तथापि घरको काम् ती सबै नास्तछन् ॥
एक्लै हाँस्न हुँदैन कोहि नभई आर्को सँगी भो जसै ।
हाँस्तैमा दिन जान्छ एहि रितले सब् काम बित्छन् तसै ॥१९॥
मानिस्को त बताउँ क्या अब विचार् पक्षी पशूको पनी ।
पाल्याको छ भन्या तुरुन्त बुझनू क्या आज खायो भनी ॥
जस्सै भो कसिंगर् बढार्नु घर भर् काहीं नराखोस् रती ।
स्त्रीले जान्नु विचार राखि मनमा एस्तो बताऊँ कती ॥२०॥
खान्या चीज् जति छन् सबै नजरले हेरेर ढाकछोप् गरून् ।
जो चीज् हुन्छ सुकाउँन्या तिनकनै ल्याएर घाम्मा धरून् ॥
खान्या चीज कुहेर फाल्नु नपरोस् दीनू कि खानू बरू ।
एती जान्नु अवश्य धेर् अब बखान् कुन् कुन् कुराको गरूँ ॥२१॥
खान्या चीज नहेरि केहि नकुहुन् सब् पैह्रन्या चीज् पनी ।
सप्पै याद रहोस् सदा मन महाँ यो चीज् छ याहाँ भनी ॥
चीज् ता छन् घरमा तथापि मनमा छैनन् त भै क्या भयो ।
आखिर् चीज् घरमा भई बखतको काम् सब् बिती गै गयो ॥२२॥
जो चीज् छन् घरमा हिरा तल पिह्रा सब् चीज् मनैमा रहुन् ।
जो खोज्छन् पतिले उ चीज् उहि बखत् ल्याएर चाँडो दिउन् ॥
खोज्दामा छन ता थियो तर कता राख्याँ हरायो भनी ।
भन्नू यो पति थ्यैं पऱ्यो पनि भन्या मानोस् मरे झैं अनी ॥२३॥
पूजाको सरजाम जत्ति जति थोक् चाहिन्छ सो सब् गरी ।
साँझमा बत्ति जलाउनू अनि ठुला पानस् विषे तेल् धरी ॥
खान्या चीज बनाइ खान दिनु जो खान्छन् परीवारले ।
जुन् चीज् राख्नु भँडार पर्छ नभुली सब् राख्नु संभारले ॥२४॥

दिनदिन घरमा जो पाहुना बस्न आया ।
तिनकन नखुवाई आफुलें क्यै न खाया ॥
गृहिणी भइ रहयाको यो ठुलो धर्म जान्नु ।
बिहक सकि दियाको अन्न भन्न्या त ठान्नू ॥२५॥

काम्का खातिर जत्ति चीज घरका दिन्मा झिक्याका थिया ।
रात्रीमा त उ काम् हुँदैन सब चीज् थन्क्याइ राखी दिया ॥
सम्झी कत्ति न मानि अल्सि सब चीज् थन्क्याइ ताल्चा पनी ।
लाउन् चोर चकार डाँकुहरुले देख्नै न पाउन् भनी ॥२६॥

छिनि सकि सब धन्धा सासुको पाउ मिच्दी ।
उँघिकन बिखबर् भै पाउ मिच्दै त ढल्दी ॥
टहल गरि टहल्ले सासुलाई रिझाई ।
पतिसित तब जाओस् स्त्री टहल् गर्नलाई ॥२७॥

प्राण्का नाथ् पतिका अगाडि गइ जो फर्माउँछन् सो गरोस् ।
भन्छन् ल्यान तमाखु खान्छु भनि ता चाँडै तमाखू भरोस् ॥
किस्मिस् दाख बदाम मिस्रि नरिवल् जो चीज् छ सो सो दिई ।
पाऊ मिच्न तयार भै अघि सरोस् तेल्को कटौरा लिई ॥२८॥

आज्ञा माफिक अ पाउहरुमा मर्दन् बहूतै गरी ।
पाऊमा शिर राखि सब् तहिं भनोस् जो काम् गरी दिन् भरी ॥
यस्तो भो यसरी गर्याँ यति गर्याँ गर्न्या छु यो यो पनी ।
भन्न्या काम कुरो भनोस् पति पनी ई बात सूनुन् भनी ॥२९॥

जति गरि दिनमा काम् सो सबै बिन्ति गर्दी ।
मधुर वचन बोल्दी स्वामिको चित्त हर्दी ॥
पतिकन यस रीत्ले बातले खुश् बनाओस् ।
जब त पति निधाउन् काखमा त्यो निधाओस् ॥३०॥

यति सब वधुशिक्षाका सिलोक् जो बनाञाँ ।
पढिलिनु सबले यो नारिको हित् जनाञाँ ॥
यहि रितसित जो स्त्री नित्य सब् काम गर्छन् ।
उभयकुल सँगै ली ती सहज् पार तर्छन् ॥३१॥

स्त्रीको धर्म पती मती पनि पती मर्न्या बखत्को गति ।
बाचुञ्जेल् सुख भोग् पनी बुझि लिंदा को दिन्छ तेस्ले जति ॥
स्त्रीको धर्म पती जती त अरु थोक् देख्तैन मन्ले रति ।
यस् लोक्मा परलोकमा सुख दिन्या सो हेर जान्छन् सती ॥३२॥

स्त्रीको धर्म पतिव्रता अति ठुलो जो गर्दछन् भक्तिले ।
आफ्ना कुल् सब् तारि पितृहरुको कुल् तार्दछन् शक्तिले ॥
स्त्रीको जन्म भयो भन्या त पतिको सेवा छ साह्रै ठुली ।
सो सेवा त गरी अनेक् अरु गरोस् साँचो कुरामा भुली ॥३३॥

# ४. फुटकर रचना

१. पाहाड्को अति बेस देश् तनहुँमा श्रीकृष्ण ब्राह्मण् थिया,
खुप् उच्चा कुल आर्यवंशि हुन गै सत्कर्ममा मन् दिया ।
विद्यामा पनि जो धुरन्धर भई शिक्षा मलाई दिया,
तिन्को नाति म भानुभक्त भनि हुम् यो जानि चिह्नी लिया ॥

२. चपला अबलाहरु एक् सुरमा,
गुनकेसरिको फुल ली शिरमा ।
हिंडन्या सखि लीकन ओरिपरी ।
अमरावति कान्तिपुरी नगरी ॥
यति छन् भनि गन्नु काँहाँ धनि ञाँ,
खुसि छन् वहुतै मनमा दुनिञाँ,
जनकी यसरी सुखकी सगरी,
अलकापुरि कान्तिपुरी नगरी ॥
कँहिं भोट - र लण्डन - चीन - सरी,
कँहिं काल्-भरि गल्लि छ दिल्ली-सरी ।
लखनौ - पटना - मदरास - सरी
अलकापुरि कान्तिपुरी नगरी ॥
तरवार कटार खुँडा खुकुरी,
पिसतोल र बन्दुक सम्म भिरी ।
अतिशूर - र - वीर - भरी नगरी,
छ त कुन्- सरि कान्तिपुरी नगरी ॥
रिस राग कपट् छल छैन जाँहाँ,
तव धर्म कती छ कती छ याहाँ ।
पशुका पति छन् रखबारि गरी,
शिवकी पुरि कान्तिपुरी नगरी ॥

३. यति दिन पछि मैले आज वालाजि देख्याँ,
पृथिवि तलभरीमा स्वर्ग हो जानि लेख्याँ ।
वरिपरि लहरामा झूलि वस्न्या चरा छन्,
मधुर वचन बोली मन् लिंदा क्या सुरा छन् ॥१॥
याँहाँ बसेर कविता यदि गर्न पाऊँ,
यस्देखि सोख अरु थोक म के चिताऊँ ।
उस्माथि झन् असल सुन्दरि एक् नचाऊँ,
खैंचेर इन्द्रकन स्वर्ग यहीं बनाऊँ ॥२॥

४. रोज् रोज् दर्शन पाउँछु चरणको ताप् छैन मन्मा कछु,
रात्भर नाच् पनि हेर्छु खर्च नगरी ठूला चयन्मा म छू ।
लाइखुट्टया उपित्रा उड्डस् इ सँगि छन् इन्कै लहड्मा बसी,
लाइखुट्टयाहरु गाउँछन् ति उपित्रा नाच्छन् म हेर्छू वसी ॥

५. जागिर् छैन धनी म छैन घरको केवल् कुदालो खनी,
खान्थ्याँ दुक्ख गरेर चाकरि गर्‍याँ मान् पाउँला की भनी ।
एक् मन् चित्त लगाइ चाकरि गर्‍याँ खूसी भया छन् हरी,
मान्माथी पनि भुक्तमान् थपि दिया कैल्हचै नखोस्न्या गरी ॥

६. चालीस् वर्ष भयाँ म पुत्र पनि एक् मात्रै छ आठ् वर्षको,
आयो काल् व्रतबन्धको गरुँ कसो वेला त हो हर्षको ।
क्यारूँ नाथ म ता पर्‍याँ फजितिमा एक्लो जाहाँ छू फगत्,
कुन् पाठ्ले व्रतवन्ध पार् गरुँ भनी देख्छू अँध्यारो जगत् ॥
गायत्री दिन् वावुको छ अधिकार् दीक्षा दिनू माइको,
वालक्ले पनि वेद् पढीकन मुसार् गर्नू गुरू गाइको ।
यस्तो मुख्य वखत् छ यां अरु छ कुन् काम् पार् लगाई दिन्या,
धेरै विन्ति कती गरूं चरणमा एकै कुराले छिन्याँ ॥
स्वामित् आज हजुर्हरू पृथिविमा मालिक् छँदामा पनी,
व्राह्मण्को व्रतवन्ध अड्कन नयार् देख्याँ र मालिक् भनी ।
जाहीरात गर्‍याँ प्रभू चरणमा जो मर्जि होला भनी,
कण्ठैसित् भनि मर्जि हुन्छ त भन्या क्यारूं महन्छू पनी ॥

७. शरिर छ अति कच्चा अन्न-जल्ले रह्याको
विनति कति गरूँ यो देहमा जो भयाको ।
बहुत फजिति पार्‍याँ रोगले ग्रस्त पारी
शरिर हुन गयो ठिक् पूर्व झैं फेरि भारी ॥
व्यर्थैमा म कुमारिचोक थुनिञा वाहीं बिरामी भई
आयाथ्याँ घरमा बिराम् अति बढ्यो ठूलो विपत्ती सही,
काट्याँ दिन् अब सञ्च भो अझ पनी थुञ्छन् त मेरो गती,
आर्को छैन दया रहोस् हजुरको मेरा त स्वामित् पती ॥
८. साँचा हुन् जति लेखिया सव कुरा आफ्नू व्यहोरा दरी,
ई कूरा त अइन् सवाल रितले स्रेस्ता प्रमाण्ले गरी ।
साबीतै ठहरेन पो पनि भन्या यस्मा अइन्मा जती,
तोक्याको छ गुना हजार तिरुँला राख्वैन एक्दाम् रती ॥
यस्भन्दा अरु पत्र पात्र पनि छन् भोग् छन् दशी छन् सही,
श्रोता साक्षि कुरा कहानि पनि छन् मेरा सनद् छन् कहीं ।
गर्न्या छैन उजुर् गर्‍याँ पनि भन्या झुट्टा गराईदिनू
सर्कारमा इजहार् दिञा खुसि भई यो झेल् कसोरी छिनू ॥
९. न मृत्यू टर्न्या हो यसरि झगडामा अघि सरी,
न कोटिन्को मालिक् हुनु छ घरमा दौलथ भरी ।
विहक्मा दिन् जान्छन् तब मन बुझाऊँ म कसरी,
कृपा राखी स्वामित् अब छिनिदिनोस् हुन्छ जसरी ॥
१०. विन्ती डिठ्टा विचारीसित म कति गरूँ चुप् रहन्छन् नबोली
वोल्छन् ता ख्याल् गर्‍या झैं अनि पछि दिनदिन् भन्दछन् भोलिभोली ।
की ता सक्दीन भन्नू कि तब छिनिदिनू क्यान भन्छन् इ भोली
भोलीभोली हुँदैमा सव घर वितिगो वक्सियोस् आज झोली ॥
११. असल् मुङ्ग्रे केरा कि त महि हवस् बेस अमिलो
कि ता सेता मूला कि त वरु हवस् साग उसको ।
असल् हुन्थ्यो धूप्मा नतर यसरी खानु कसरी ।
भुटी ल्यायौ थाल्मा मकइ तिमिले क्याँन यसरी ॥

१२. गजाधर् सोतीका घर वुढि अलक्षिन्कि रहिछन्,
नरक् जानालाई सबसित विदावादि भइछन् ।
गयौं साँज्मा तिन्का घर पिंडिमाँहाँ वास गरियो,
निकालीन् साँजैमा अलिक पर गुज्रान गरियो ॥

१३. ति शालीवाहन्का समय षडत्रिंशत् भइकन
अनी आषाढ् मास्को दिन पनि उनन्तिस् गइकन ।
घडी एक्तिस्माहाँ विघटि पनि बत्तिस् परिकन,
नवांशक् कण्ठीरव् धनुष परि जो वेस लगन ॥
मिथुन्मा सूर्यै छन् गुरुनिलय मीन्का विधु पनी,
महीसुत् बुध् राहू शशिसदनका इ तिन पनी ।
गुरू भाग्यस्थान्का रविभवनमा गैकन बस्या,
भृगूजी ता आफ्नै सदन वृषमा गैकन पस्या ।
मकर्मा सौरी छन् ध्वजसहितका स्वग्रिहि यहाँ,
बतायाका क्रम्ले ग्रहहरु वस्या कुण्डलिमहाँ ॥

१४. खर् अक्षर् पर भै विसर्ग तिमिले क्याले गऱ्यौ लोप् भनी,
कस्ता पण्डित ह्वौ भनेर चिठिमा लेखी पठायौ पनी ।
खर् अक्षर् पर भै विसर्ग तिमिले पो लोप् गऱ्यौ देखियो,
यस्तै काम् गरि हिँड्दछौ र तब पो उल्लू भनी लेखियो ॥
पैले दाइ् गइ एक् विवाह गरियो भन्न्या पनी लेखियो ।
फेर् तेसै चिठिमा म मर्छु कहिले भन्न्या पनी देखियो ।
आयूको त विचार् विवाह नगरी पैल्हचे उचित् हो लिन्या,
उल्लू ह्वौ तिमि उल्लुलाइ अहिले कुन् उत्तरा हो दिन्या ॥

१५. बिर्के टोपी पठाऊ भनि खबर हुँदा भेजियाको त टोपी
माथ्मा राख्ता त सानै भइगयछ अहो ! क्या भयो टूपि छोपी ।
तस्मात् त्यो टोपि हाम्रा घर दिनु बढिया टोपि आर्को पठाई,
नानी खूसी गरम्ला मुख गरि हँसिलो लाउला माथ् अटाई ॥

१६. भाषा श्लोक् भनु ता अवश्य अरु ता बुझ्दैन कोई पनी,
संस्कृत् हुन् भनु ता इ शास्त्रिहरुता धेर् छन् अशुद्धा भनी ।
भन्छन् आज ठिमाहका गणितमा तिम्म्रा शिलोक् ई गया,
भाषा श्लोक बनाइ राख तिमि नाक् बुद्धी र बर्गत् भया ॥

१७. जस्द्वारा जमले जहां जसरि जो गर्छन् त जुन् जुन् घरी,
उस्द्वारा उसको वहां उ फलभोग् छुट्तैन कस्तै गरी ।
प्रारब्धै वलवान् छ सर्व जनको प्रारब्ध-भोग् गर्दछन्,
आफ्नू काम छिपाइ दोष्कन दिन्या व्यर्थै नरक् पर्दछन् ॥

१८. न पोथी पात्रा छन् न कलम मस्यानी छ सँगमा,
सधैं हुक्का नारी थरकि फिंजि खेल्छौ चयनमा ।
कती विर्ता तिम्म्रो कति छ धन दौलथ् यस घरी,
उडायौ आज्यांको जति अव गया वाबु त मरी ॥

१९. ढीटा छन् सव् कुरा पूरा छोरा धेर् जसका तिनै ।
धनी छन् धनले क्यार्नू भन्दैछन् अधिका बुढा ॥
ढीटा भन्छन् त क्या भैगो सज्जन्का अघि वातमा ।
वक्-वक्-वक्-वक् त जो गर्छन् मूर्खै हुन् ति भनुन् बुढा ॥

२०. केश् कञ्चेट् कुहुनू कपाल् र कलेजो काखी करङ् कन्सिरी,
कान्यागूजि र कुर्कुचा कटि र कान् कम्मर् र कापा पनी ।
कान्छिउम्लि र काँध कुम् पनि भया कण्ढो र कोखो समेत्,
कम्पारो जियमा कदेखि उठन्या विस्थोक् इनै हुन् वुझ ॥

२१. मास् भृङ्गी बेल दूभो वयर धतुरो तूलसीका अपाङ्का
बीहींका पात् शमीका करविर असऊ आँक गुम्पात्तिका पात् ।
विष्णूकान्ता र दारिम् सुरतरु र कुरो सिन्दुर्याका जयन्ती
फुल्कार्गी देरिका पात् लिनु बटुलि गणेश्चौथिका दीनमा साथ् ॥

२२. पाँच् तोला घिउ गाइको र खसिको बोसो समानै लिनू,
चिउरीको घिउ सोहि भाग करुवा तेल् भाग सोही दिनू ।
सोइ भाग् कागति–रस् मइन् सब समान् तूथो र गन्धक् अनी,
फुस्रो सिन्दुर गेरु औषध इ चार् पाँच् पाँच मासा पनी ॥
चार् चीज् ती पछिका पिनेर मइदा पारेर सिन्दूर् सरी,
आदीका सव चिज् पगालि हुँडली त्यो चूर्ण ताहीं छरी ।
लाऊ दाद–दिनाइ गैह्र खटिरा जूका र डांस् मोस्हरू,
जो जो छन् विषजातिको विष लिन्या छैनन् उपायी अरू ॥

२३. पढ्नु गुन्नू खेल्न माया नगर्नु,
चर्चो गर्नू लक्ष्मि–बारी–डिहीको ।
ढीटो हूनू इष्ट–सङ् बात गर्दा,
हुनु टाठो जाङ्ग्रिलो काम पर्दा ॥
२४. कतै खरानी छरि भुस् कतै ता,
कतै कसिङ्गर् कनिका कतै ता ।
सुत्न्या दिनैदिन् इलमै बिगारी,
तेस्लाइ ता भन्नु सुँगुर्नि नारी ॥
झार्दी न लिप्दी मइली छ धेर,
गर्न्या कुरा धेर् घर–घर् डुलेर
राख्न्या ति भाँडा सब नील पारी,
यो चाँहि हो खास कुकुर्नि नारी ॥
२५. तिन् सात् एग्घार पन्ध्रै कउडि खडि भया दाउ त्यो हुन्छ तीया,
चार् आठ् बाह्रै र सोह्रै चित घवट जउन् होस त्यो हुन्छ चौका ।
एक् पाँच् नौ तेह्र ठाडा बुझिलिनु यिनको दाउ पञ्जा छ पक्का,
दूईटा वा छ ओटा दश चउध खडा कौडि हुन्छन् त छक्का ॥
२६. तान्यो एग्घारबाटै पनि उँडि बहुतै चक्किले दिग् गरायो,
एकछिन् पाशा विचार्यां उहिं पनि गइ झन् आउन्या आश् हरायो ।
छक्का लिम् पर्छ चौका यहि रित हुन गो चक्कि पाशा छरूवा,
खेल्दामा साठी हार्यां दिन पनि सकियो आज भय्यो हरूवा ॥
२७. क्या लड्छन् बटई र तित्रि चखुरा साँडे पहल्मान्हरू,
अर्ना भैंसि र सिंह हात्ति कुखुरा लड्छन् ति एकछिन् बरू ।
राज्ज्यैको थप गर्न मन्सुव हुँदा लड्छन् कि राजाहरू,
की ता स्वामिनिर्मित्त नित्य घरमा लड्छन् इ सौताहरू ॥
२८. विन्ती एक म गर्दछु सुन प्रिये प्रीती निरन्तर् रहोस्,
ताँहाँको मन पिञ्जरा म मुनियाँ यै चाल् सदाकाल् रहोस् ।
तिम्रो त्यो मुखचन्द्र झल्कि मनमा तेस्ले उज्यालो गरी,
शीतल् गर्नु उचीत हो अधिक ताप् गर्दो छ सूर्य सरी ॥

२९. विद्वान् जन्ले लोहलाइ बेच्नु छैन,
भन्दा सुन्थ्याँ यो कुरो हो कि हैन ।
लोहा बेची मोल क्या लीनु होला,
खड्गै–पूजा–निम्ति यो दीनु होला ॥

३०. स्वस्तिश्री पखरा–अदालतमहाँ डिट्ठा बिचारीहरू
पाऊमा परि बिन्ति गर्छु अहिले बेरामि छू क्या गरू
मेरो म्याद रहोस् सकीन अहिले आऊँन यो म्यादमा,
गर्न्याछू बकपत्र येहि मितिले एक् मासका भित्रमा ॥

३१. आयेंथ्याँ मनका कुरा चरणमा भ्फीजो गरम् क्यै भनी,
दर्शन् पाइन फर्कि जान्छु अहिले हाँजिर् जनाई अनी ।
हींडथ्याँ घर्–तिर आज ता, घर पुगी फर्केर आई अब,
गर्न्थन् ई मनका कुरा चरणमा बिन्ती गरूँला सब ॥

३२. भर्–जन्म घाँस–तिर मन्–दिइ धन् कमायो,
नाम् क्यै रहोस् पछि भनेर कुआ खनायो ।
घाँसी दरिद्रि घरको तर बुद्धि कस्तो !
मो भानुभक्त धनि भैकन आज यस्तो ॥
मेरा इनार न त सत्तल पाटि क्यै छन् ।
जो धन् र चीजहरु छन् घरभित्र नै छन् ।
यस् घाँसिले कसरि आज दिएछ अर्ती,
धिक्कार हो मकन बस्नु नराखि कीर्ति ॥

३३. मानुङ्को सरि गाउँ उत्तम ठुलो लागेन काँहीं पनी,
वास्नालाइ रमाइला अति चिसो आऊँछ हावा पनी ।
घर्मा नै बसि फेर् हिमालयजिको बाराहिजीको पनी,
शुक्ला दक्षिण तर्फ उत्तर दिशा माहेन्द्रि दर्शन् पनी ॥

३४. ख्वामित् यस् गिरिधारिले अति पिऱ्यो व्यर्थै गऱ्यो भ्फेल् पनी,
यस्का भ्फेल उतार्नलाइ सजिलो यै हो व्यहोरा पनी ।
ख्वामित्लाइ चढाउँनाकन यहाँ क्यै श्लोक् कवीता गऱ्याँ,
मेरा श्लोक् सुनिबक्सियोस् त भ्फगडा छीनिन्छ पाऊ-पऱ्याँ ॥

बीस् साल्सम्म त ज्यान त्यान यहिं बाँद् लाग्यो र खेत् रोपिया,
यो साल् बाँद् पनि खोलिएछ जलले ढुङ्गा सबै छोपिया,
ढुङ्गा खोजि लगाउँ बाँद कसरी राख्तैन ढुङ्गा पनी,
मानिस् पस्न त क्वै सकेन जलमा स्वात्तै बगम्ला भनी ॥
अर्ज्याल् भाट ढकाल् अचार्ज इन चार् जम्मा भई सब् बस्यौं,
मील्यो मत् सब मोहिको र मतले बाँद् लाऊनामा पस्यौं,
उस् मौका गिरिधारि एहि पनि भाट् सल्लाहमा नै थियो,
भर् यस्को नभएर मात्र अहिले यस्तो उजुर् पो दियो ॥
३५. लुच्चा हुन् यस भाटका सब कुरा आँफै कुला मूनिकै,
खेतैलाइ त टापु भन्दछ भन्या यस् भाटको क्या सही ॥
३६. अघिल्ला जन्मैका पनि शरिरमा पाप् कति हुनन्
अनी फेरी ज्राहाँ अझ अरु थपीन्या पनि हुनन्
भनी सुद्धी राख्न्या जनहरु दयाले तरि-लिनन्,
मिचाहा जो जो छन् यमपुरि गई खुप्सित रुनन् ॥
मिचाहा को को छन् भनिकन विचार् गर्नु जनले,
हरीको विश्वासै नगरि हिंडन्या मूर्ख मनले ॥
३७. क्वै उठ्छन् त सवेरमा ति धनकै खाँतीरका काम् लिई,
दौडयाका परदेश घर् घर धनै-वृद्धी विषे मन् दिई ।
धन् ठूलो बुझि धर्म छोडि पनि धन् घर्भित्र भर्छन् ज्रहाँ,
सब् छोडी मरि जानु पर्दछ नरक् चेत्नन् अनी पो वहाँ ॥
३८. यत्ती छन् सब देवता भनि यहाँ गन्नै नसक्नू भई,
याहीं छन् सब तीर्थ पाप् हरि दिन्या जानू नपर्न्या कहीं ।
ई नेपाल्-सरि पूण्य भूमि त अहो देखीन मैले कतै,
आर्या-तीर्थ-मरण् छ मुक्ति दिनमा तत्पर् खडा छन् शिवै ॥
माया ईश्वरकी जगत् कि जननी श्री गुह्यकाली पनी,
आफ्ना भक्त उपर् कृपा गरु भनी ताहीं बस्याकी पनी ॥
३९. क्याले भुल्छौ जगत्मा नरहरु बहुतै दुःखले पक्रिएका,
सब्का शिर्माथि लाठी दिन-दिन यमका वज्र नै टक्रिएका ।
देख्छौ सुन्छौ कहन्छौ अझ हरि नभजी वित्तमै चित्त लायौ,
ताप् होला खुप् मरण्मा हरि भज नभजी व्यर्थ सब् दिन् बितायौ ॥

# आदिकवि भानुभक्त आचार्यको संक्षिप्त जीवनी

–मुक्तिनाथ आचार्य
भानुभक्ताऽचार्य
चुँदीरम्घा, तनहुँ

हाम्रो यो हिमाच्छादित पाशुपत क्षेत्र पुण्यभूमि नेपाल अधिराज्यको भूमध्य भागमा पर्ने गण्डकी अञ्चलअन्तरगत तनहुँ जिल्लाको चुँदीरम्घा गाउँनिवासी पवित्र ब्राह्मण कुलका धुरन्धर विद्वान् श्रीकृष्ण आचार्यका ज्येष्ठ सुपुत्र पिता धनञ्जय आचार्य तथा माता धर्मावतीदेवी आचार्यका पवित्र कोखबाट वि. सं. १८७१ साल आषाढ २९ गते रविवारका दिन अपराह्न चुँदीरम्घा भन्ने गाउँमा आदिकवि भानुभक्त आचार्यको शुभजन्म भएको हो ।

कविजीका आफ्ना पिता धनञ्जय आचार्य सरकारी सेवातर्फ लागी पाल्पा तहसिल अड्डाको हाकिम खरिदार पदमा नियुक्त हुनुभएबाट वहाँ प्रायः पाल्पामा नै रहनुपर्ने भै कवि भानुको प्रारम्भिक कालदेखिकै शिक्षादीक्षा, लालनपालन आदि सम्पूर्ण जिम्मा पितामह श्रीकृष्ण आचार्यकै कर्तव्यभित्र पर्न आएको हुँदा कविजीले सम्पूर्ण शिक्षादीक्षा आदि कुरा विद्वान् पितामह श्रीकृष्ण आचार्यबाट नै प्राप्त गर्ने अवसर पाउनु भएको थियो ।

कविजीले प्रारम्भमा अमरकोष एवं व्याकरणको लागि महत्त्वपूर्ण ग्रन्थ मानिने लघुकौमुदी नामक ग्रन्थको अध्ययन गर्नुभएको कुरा स्वयं वहाँकै हस्तलिखित तत्तत् ग्रन्थहरूका पाण्डुलिपिका अवशेषद्वारा प्रत्यक्ष हुन आउँछ ।

प्रायःजसो समर्थवान् आस्तिक संस्कारसम्पन्न नेपालीहरू "काश्यांमरणान् मुक्तिः" यस नीतिवाक्यलाई ठूलो मान्यता दिने परम्पराअनुसार श्रीकृष्ण आचार्य आफ्नो अन्तिम उत्तरार्ध काललाई काशी कल्पवासमा व्यतीत गरी काशीमा नै देहत्याग गर्ने उद्देश्यले काशीमा कल्पवास बस्न जाँदा आफ्ना प्यारा नाति भानुभक्तले काशीका विद्वान्हरूबाट उच्च शिक्षा हासिल गर्ने अवसर पावस् भन्ने विचारले पितामह श्रीकृष्ण आचार्यले नाति भानुलाई पनि साथैमा लानुभएबाट पितामहका साथ करिब दुई वर्षसम्म काशीमा रहँदा कवि भानुभक्त आचार्यले काशीका विद्वान्हरूबाट पनि विशेष रूपमा शिक्षा हासिल गर्ने सौभाग्य पनि प्राप्त गर्नुभएको हो ।

काशीका कल्पवासीहरू जो कोहीले पनि जीवनको अन्तिम घडीमा 'राम नाम' रूप तारक मन्त्र भगवान् विश्वनाथबाट प्राप्त गरी मोक्ष हुन पाउने शास्त्रको गम्भीर आशयलाई काशीवासीहरूले ठूलो आदर एवं श्रद्धाका साथ मान्यता दिने गरेको त्यो अत्यन्त रहस्यमय कुराले कवि भानुका हृदयमा मर्यादापुरुष श्रीरामप्रति अगाध श्रद्धा उत्पन्न हुन गएको थियो ।

परिणामस्वरूप आफ्ना पितामहको देहावसानअनन्तर आफ्नो घर चूँदीरम्घामा आएपछि साहित्यिक संस्कार एवं सामाजिक भावनाले परिपूर्ण कविजीले प्रसङ्गवश घट्न आएका विभिन्न घटनाहरूसँग सम्बन्धित फुटकर कविताहरू पनि वेलामौकामा रचना गर्दै गरी व्यावहारिक तथा पारमार्थिक दुवै पक्षमा अत्यन्त उपयोगी भएको मर्यादापुरुषोत्तम दशरथनन्दन श्रीरामचन्द्र तथा सतीशिरोमणि जनकतनया सीताजीजस्ता अत्यन्त अनुकरणीय व्यक्तित्वहरूको जीवनचरित्र उल्लिखित संस्कृतमा रहेको अध्यात्मरामायणको सरल भाषामा भाषानुवाद गर्ने अदम्य साहस झिकी समस्त नेपाली नरनारीहरूलाई आदर्शमहापुरुष श्रीरामचन्द्र तथा सतीशिरोमणी सीताजीजस्तै मर्यादित एवं सच्चरित्रका धनी तुल्याई नेपाल अधिराज्यलाई रामराज्यसरह बनाउने तीव्र उद्देश्य राखेर सात काण्डमा विभक्त अध्यात्मरामायणको राष्ट्रभाषा नेपालीमा भाषानुवाद गर्नुभएको कुरालाई कसैले पनि नकार्न मिल्दैन ।

कविजीले रामायणको भाषानुवाद गर्ने क्रममा वि. सं. १९०५ बाट सुरु गरी बालकाण्ड, अयोध्याकाण्ड एवं अरण्यकाण्ड पहिले नै र आफ्ना पिता खरिदार धनञ्जय आचार्यको सरकारी बाँकी फरफारकका लागि कुमारीचोकको थुनामा बस्नुपरेका बखतमा किष्किन्धाकाण्ड, सुन्दरकाण्ड तथा कुमारीचोकको थुनाबाट छुट्कारा मिलेपछि युद्धकाण्ड र उत्तरकाण्डसमेतको भाषानुवाद गरिसकी सम्पूर्ण रामायणको भाषानुवाद वि. सं. १९१९ सालको सुरु वैशाख महिनामा समाप्त पार्नुभएको कुरा कविजीले आफ्ना छोरा रमानाथ आचार्यलाई काठमाडौंबाट पहाड घरतर्फ लेखेर पठाउनुभएको चिठीबाट प्रमाणित हुन आउँछ ।

त्यसै गरी व्यावहारिक सुधारका लागि प्रायःजसो कर्तव्याकर्तव्यको पटक्कै ख्याल नभएका असभ्य, अशिक्षित, शुद्धबुद्ध नेपाली नारीहरूलाई सभ्य, सज्जन, शिक्षित तथा सुयोग्य गृहिणी तुल्याई देशका सम्पूर्ण गृहस्थहरूको घरघरमा शान्ति र सुव्यवस्थाको लहर फैलाउने तीव्र आकांक्षा लिएर मित्र तारापतिकी बुहारीलाई निमित्त बनाई समयानुकूल अत्यन्त व्यावहारिक 'वधूशिक्षा' नामक मौलिक ग्रन्थ तारापतिका घरमा वास बसेकै रातमा तयार पारी सो ग्रन्थ मित्र तारापतिलाई बिहान प्रदान गर्नुभएको पनि स्वयं कविजीकै उक्तिबाट पाउन सकिन्छ ।

त्यतिमात्र नभई भौतिक सम्पत्ति मानिने धनजनादि वैभवरूप सर्वैश्वर्यले जतिसुकै सुसम्पन्न हुन गए तापनि अध्यात्मवाद (भगवद्भक्ति एवं ज्ञान) सही रूपले अवलम्बन गर्नुविना मानिसको अमूल्य जीवन यथार्थ रूपमा सफलताको बिन्दुमा पुग्न सम्भव नहुने कुरा ईश्वरांश प्राप्त गरेका हाम्रा त्रिकालदर्शी महापुरुषहरूको सद्वाक्यरूप नीतिशास्त्रअनुसार समस्त देशवासीहरू अपूर्व आध्यात्मिक सम्पत्तिका पनि धनी बन्न समर्थ भई व्यावहारिक तथा पारमार्थिक दुवै पक्षमा सफलता प्राप्त गरी प्राणीमध्येको आफ्नो उत्तम तथा दुर्लभ मानवजीवन यथार्थ रूपमा सफलताको उच्चशिखरमा पुऱ्याउन समर्थ बनी सदाका लागि चिरसुखी बनून् भन्ने सदुद्देश्यले भक्तिरसले पूर्ण अत्यन्त सारगर्भित मौलिक ग्रन्थ भक्तमाला र आद्यजगद्गुरु भगवान् श्रीशङ्कराचार्यरचित प्रश्नोत्तरमालासमेतको छायानुवाद सहर्ष रचना गरेर छाडिदिनुभएको छ ।

यसरी आफ्नो हँसिलो, रसिलो, ठट्चौलो, सरल एवं लोकहितकारी शुभगुणाहरूले सुसम्पन्न आदर्शमय जीवनलाई कविजीले वि. सं. १९२५ साल आश्विन शुक्ल पञ्चमीका दिन पूरा ५४ वर्षको उमेरमा मर्स्याङ्दी नदीको तट जलाश्रयमा अन्तिम रूप दिएर देहत्याग गरी समस्त नेपाली नरनारीका सफल मार्गदर्शक बन्न पुग्नुभएको छ भन्दा दुई मत हुन नजाला। अस्तु।